॥ श्रीहरिः ॥

2246

# श्रीमद्भगवद्गीता

## पदच्छेद, अन्वय

### साधारण भाषाटीकासहित ( नेपाली )






जयदयाल गोयन्दका

॥ श्रीहरिः ॥

2246

# श्रीमद्भगवद्गीता

## पदच्छेद, अन्वय

साधारण भाषाटीकासहित

(नेपाली)



जयदयाल गोयन्दका

2246 Gita Padched (Nepali)_Section_1_Front

पुस्तकहरू यहाँ पनि उपलब्ध छन्।

गीताप्रेस पुस्तक बिक्री केन्द्र
पसल नं० 6,7,8 माधवराज सुमार्गी स्मृति भवन, वनकाली,
पशुपति क्षेत्र, काठमाडौं, नेपाल।
e-mail : gitapress.nepal@gmail.com

सं० २०७६ प्रथम संस्करण २,०००

❖ मूल्य—₹६५
(पैंसठ रुपये)

प्रकाशक एवं मुद्रक—
गीताप्रेस, गोरखपुर—२७३००५
(गोबिन्दभवन-कार्यालय, कोलकाता का संस्थान)
फोन : (०५५१) २३३४७२१, २३३१२५०, २३३१२५१
web : gitapress.org e-mail : booksales@gitapress.org
गीताप्रेस प्रकाशन gitapressbookshop.in से online खरीदें।

2246 Gita Padched (Nepali)_Section_1_Back

ॐ

श्रीपरमात्मने नमः

शास्त्रहरूको अवलोकन र महापुरुषहरूको वचनहरूको श्रवण गरेर म यस निर्णयमा पुगें कि संसारमा श्रीमद्भगवद्गीताको समान कल्याणको लागि कुनै पनि उपयोगी ग्रन्थ छैन। गीतामा ज्ञानयोग, ध्यानयोग, कर्मयोग, भक्तियोग आदि जति पनि साधन बताइएका छन्, तिनीहरूमध्ये कुनै पनि साधन आफ्नो श्रद्धा, रुचि र योग्यताअनुसार गर्नाले मनुष्यको चाँडै कल्याण हुन सक्दछ।

अतएव उपर्युक्त साधनहरूको तथा परमात्माको तत्त्व रहस्य जान्नको लागि महापुरुषहरू र तिनका अभावमा उच्च कोटिका साधकहरूसित श्रद्धा-प्रेमपूर्वक संगत गर्नलाई विशेष चेष्टा राख्दै गीताको अर्थ र भावसहित मनन गर्नु तथा त्यसअनुसार आफ्नो जीवन बनाउनको लागि प्राणपर्यन्त प्रयत्न गर्नुपर्दछ।

निवेदक

कार्तिक शुक्ला १२ सं० १९८६ | जयदयाल गोयन्दका

मु० बाँकुड़ा |

ॐ

### श्रीपरमात्मने नमः

# श्रीगीताजीको महिमा

वास्तवमा श्रीमद्भगवद्गीताको माहात्म्य वाणीद्वारा वर्णन गर्ने सामर्थ्य कसैको पनि छैन, किनकि यो एउटा परम रहस्यमय ग्रन्थ हो। यसमा सम्पूर्ण वेदहरूको सार–सार सङ्ग्रह गरिएको छ। यसको संस्कृत यति सुन्दर र सरल छ कि अलिकति अभ्यास गर्दा पनि मानिसले यसलाई सजिलै सम्झिन सक्दछन्, तर यसको अर्थ भने यति गम्भीर छ कि आजीवन निरन्तर अभ्यास गरिरहँदा पनि त्यसको अन्त्य आउँदैन। प्रतिदिन नयाँ नयाँ भावहरू उत्पन्न भइरहन्छन्, जसका कारण यो सदैव नवीन बनिरहन्छ। एकाग्रचित्त भएर श्रद्धा–भक्तिसहित विचार गरेपछि यसका शब्दशब्दमा परम रहस्य भरिएको प्रत्यक्ष प्रतीत हुन्छ। भगवान्‌का गुण, प्रभाव र मर्मको वर्णन जसरी यस गीताशास्त्रमा गरिएको छ, त्यसरी अन्य ग्रन्थहरूमा भेटिन गाह्रो छ, किनकि प्रायः ग्रन्थहरूमा केही न केही सांसारिक विषय भेटिइरहन्छ। भगवान्‌ले 'श्रीमद्भगवद्गीता' रूपी एउटा यस्तो अनुपमेय शास्त्र बताउनुभएको छ कि जसमा एउटा पनि शब्द सदुपदेशले खाली छैन। श्रीवेदव्यासजीले महाभारतमा गीताजीको वर्णन गरिसकेपछि भन्नुभएको छ—

**गीता सुगीता कर्तव्या किमन्यैः शास्त्रविस्तरैः।**
**या स्वयं पद्मनाभस्य मुखपद्माद्विनिःसृता॥**

'गीता सुगीता गर्नयोग्य छ, अर्थात् श्रीगीताजीलाई राम्रोसित पढेर अर्थ र भावसहित अन्तःकरणमा धारण गर्नु मुख्य कर्तव्य

हो, जो कि स्वयं पद्मनाभ भगवान् श्रीविष्णुको मुखारविन्दबाट निस्किएको छ भने अन्य शास्त्रहरूको विस्तारसित के प्रयोजन ?' स्वयं श्रीभगवान्ले पनि यसको माहात्म्यको वर्णन गर्नुभएको छ (अ० १८ श्लोक ६८ देखि ७१ सम्म)।

यस गीताशास्त्रमा मनुष्यमात्रको अधिकार छ, चाहे ऊ कुनै पनि वर्ण, आश्रममा स्थित होस्, परन्तु भगवान्मा श्रद्धालु र भक्तियुक्त अवश्य हुनुपर्दछ, किनकि भगवान्ले आफ्ना भक्तमा नै यसको प्रचार गर्नका लागि आज्ञा दिनुभएको छ तथा यो पनि भन्नुभएको छ कि स्त्री, वैश्य, शूद्र र पापयोनिले पनि मेरो परायण भएर परमगतिलाई प्राप्त गर्दछन् (अ० ९ श्लोक ३२); आ-आफ्ना स्वाभाविक कर्महरूद्वारा मेरो पूजा गरेर मनुष्यले परमसिद्धि प्राप्त गर्दछ (अ० १८ श्लोक ४६)—यी सबै विचार गर्दा परमात्माको प्राप्तिमा सबैको अधिकार छ भन्ने कुरा ज्ञात हुन्छ।

तर, उक्त विषयको मर्मलाई नसम्झनाले धेरै मानिस, जसले श्रीगीताजीको केवल नाम मात्र सुनेका छन्, गीता त केवल संन्यासीहरूका लागि मात्रै हो भनेर भन्ने गर्दछन्, तिनले आफ्ना छोराहरूलाई पनि गीताजीको अभ्यास गराउँदैनन्, कतै गीताको ज्ञानका कारण कदाचित् उसले घर छोडेर सन्न्यासी नहोस्। तर, उनीहरूले मोहका कारण क्षात्रधर्मबाट विमुख भएर भिक्षाको अन्नले निर्वाह गर्नका लागि तयार भएका अर्जुनले जुन परम रहस्यमय गीताको उपदेशबाट आजीवन गृहस्थमा रहेर आफ्नो कर्तव्यपालन गरे, गीताशास्त्रको यस्तो उल्टो परिणाम कसरी हुन सक्छ ? भन्ने कुरा विचार गर्नुपर्दछ।

अतएव, कल्याणको इच्छा भएका मनुष्यहरूका लागि के उचित छ भने उनीहरूले मोहलाई त्यागेर अतिशय श्रद्धा-भक्तिपूर्वक

आफ्ना बालकहरूलाई अर्थ र भावसहित श्रीगीताजीको अध्ययन गराऊन् एवं स्वयंले पनि यसको पठन र मनन गर्दै भगवान्‌को आज्ञानुसार साधना गर्न तत्पर होऊन्, किनकि अति दुर्लभ मनुष्य-शरीर पाएर पनि आफ्नो अमूल्य समयको एक क्षण पनि दुःखमूलक क्षणभङ्गुर भोगहरूलाई भोग्नका लागि नष्ट गर्नु उचित होइन।

## श्रीगीताको प्रधान विषय

श्रीगीताजीमा भगवान्‌ले आफ्नो प्राप्तिका लागि मुख्य दुई मार्ग बताउनुभएको छ—एउटा साङ्ख्ययोग, अर्को कर्मयोग। तिनमा—

(१) सम्पूर्ण पदार्थ मृगतृष्णाको पानीजस्तै अथवा सपनाको सृष्टिसमान मायामय हुनाले मायाको कार्यरूप सम्पूर्ण गुणै गुणमा विचरण गर्दछन् भन्ने सम्झिएर मन, इन्द्रिय र शरीरद्वारा हुने सम्पूर्ण कर्महरूमा कर्तापनको अभिमानले रहित हुनु (अ० ५ श्लोक ८-९) तथा सर्वव्यापी सच्चिदानन्दघन परमात्माको स्वरूपमा एकभावले नित्य स्थित रहँदै एक सच्चिदानन्दघन वासुदेवसिवाय अन्य कसैको पनि हुनेपनको भाव नरहनु साङ्ख्ययोगको साधना हो।

(२) सबै कुरा भगवान्‌कै ठानेर सिद्धि-असिद्धिमा समत्वभाव राख्दै आसक्ति र फलको इच्छा त्यागेर भगवदाज्ञानुसार केवल भगवान्‌कै लागि सबै कर्मको आचरण गर्नु (अ० २ श्लोक ४८, अ० ५ श्लोक १०) तथा श्रद्धाभक्तिपूर्वक मन, वाणी र शरीरले सम्पूर्णतः भगवान्‌कै शरण परेर नाम, गुण र प्रभावसहित उहाँको स्वरूपको निरन्तर चिन्तन गर्नु (अ० ६ श्लोक ४७), यो कर्मयोगको साधना हो।

उक्त दुवै साधनाको परिणाम एउटै हुनाले ती वास्तवमा अभिन्न मानिएका छन् (अ० ५ श्लोक ४-५), तर साधनकालमा अधिकारी-भेदले दुवैको भेद हुनाले दुवै मार्ग भिन्न-भिन्न

बताइएका छन् ( अ० ३ श्लोक ३ ) । यसर्थ, एउटा पुरुष दुवै मार्गमा एकै पटक हिँड्न सक्दैन, जसरी गङ्गाजी भएको ठाउँमा जाने दुई बाटाहरू भए पनि एउटा मानिस एउटै समयमा दुबै बाटोबाट हिँड्न सक्दैन। ती साधनामध्ये कर्मयोगको साधना संन्यास-आश्रममा उचित हुँदैन, किनकि संन्यास-आश्रममा कर्महरूको स्वरूपदेखि नै त्याग गर्ने कुरा बताइएको छ, तर साङ्ख्ययोगको साधना सबै आश्रमहरूमा उचित हुन सक्छ।

यदि भनिन्छ कि साङ्ख्ययोगलाई भगवान्ले संन्यासको नामले बताउनुभएको छ, यसर्थ त्यसको अधिकार संन्यास आश्रममै छ, गृहस्थमा होइन भनेर भन्ने हो भने यो ठीक होइन, किनकि अर्को अध्यायमा श्लोक ११ देखि ३० सम्म जुन साङ्ख्यनिष्ठाको उपदेश गरिएको छ, त्यसअनुसार पनि भगवान्ले ठाउँ-ठाउँमा अर्जुनलाई युद्ध गर्ने योग्यता देखाउनुभएको छ। यदि गृहस्थमा साङ्ख्ययोगको अधिकार नै हुँदैनथ्यो भने भगवान्ले यसरी किन भन्न सक्नुहुन्थ्यो ? हो, यत्ति विशेषता अवश्य छ कि साङ्ख्यमार्गको अधिकारी देहाभिमानदेखि रहित हुनपर्‍यो, किनभने जबसम्म शरीरमा अहम् भाव रहन्छ, तबसम्म साङ्ख्ययोगको साधनालाई राम्ररी बुझ्न सकिँदैन। यसर्थ, भगवान्ले साङ्ख्ययोगलाई कठिन बताउनुभएको छ ( अ० ५ श्लोक ६ ) भने ( कर्मयोग ) साधना सुगम हुने भएकाले अर्जुनप्रति ठाउँ-ठाउँमा तिमीले मेरो चिन्तन गर्दै कर्मयोगको आचरण गर भनेर भन्नुभएको छ।

## अथ ध्यानम्

**शान्ताकारं भुजगशयनं पद्मनाभं सुरेशं**
**विश्वाधारं गगनसदृशं मेघवर्णं शुभाङ्गम् ।**

**लक्ष्मीकान्तं कमलनयनं योगिभिर्ध्यानगम्यं**
**वन्दे विष्णुं भवभयहरं सर्वलोकैकनाथम् ॥**

अर्थ—जसको आकृति अतिशय शान्त छ, जो शेषनागको शय्यामाथि शयन गरिरहनुभएको छ, जसको नाभिमा कमल छ, जो देवताहरूका पनि ईश्वर र सम्पूर्ण जगत्का आधार हुनुहुन्छ, जो आकाशसदृश सर्वत्र व्याप्त हुनुहुन्छ, नीलो मेघसमान जसको वर्ण छ, अतिशय सुन्दर जसका सम्पूर्ण अङ्ग छन्, जो योगीहरूद्वारा ध्यान गरेर प्राप्त गरिनुहुन्छ, जो सम्पूर्ण लोकका स्वामी हुनुहुन्छ, जो जन्म-मरणरूपी भयलाई नाश गर्नेवाला हुनुहुन्छ, यस्ता लक्ष्मीपति, कमलनेत्र भगवान् श्रीविष्णुलाई म शिरले प्रणाम गर्दछु।

**यं ब्रह्मा वरुणेन्द्ररुद्रमरुतः स्तुन्वन्ति दिव्यैः स्तवै-**
**र्वेदैः साङ्गपदक्रमोपनिषदैर्गायन्ति यं सामगाः।**
**ध्यानावस्थिततद्गतेन मनसा पश्यन्ति यं योगिनो**
**यस्यान्तं न विदुः सुरासुरगणा देवाय तस्मै नमः ॥**

अर्थ—ब्रह्मा, वरुण, इन्द्र, रुद्र र मरुद्गणले दिव्य स्तोत्रहरूद्वारा जसको स्तुति गर्दछन्, सामवेदका गाउने अङ्ग, पद, क्रम र उपनिषद्सहित वेदहरूद्वारा जसको गान गरिन्छ, योगीजन ध्यानमा स्थित तद्गत भएको मनले जसको दर्शन गर्दछन्, देवता र असुरगण (जोसुकै)ले जसको अन्त जान्दैनन्, ती (परमपुरुष नारायण) देवलाई मेरो नमस्कार छ।



ॐ श्रीपरमात्मने नमः

नारायणं नमस्कृत्य नरं चैव नरोत्तमम्।
देवीं सरस्वतीं व्यासं ततो जयमुदीरयेत्॥

# अथ श्रीमद्भगवद्गीता

## [ तत्त्वविवेचना अनुसार ]

### भाषाटीकासहित

## अथ प्रथमोऽध्यायः

***प्रधान-विषय***—*१ देखि ११ सम्म दुबै सेनाहरूको प्रधान-प्रधान शूर-वीरहरूको गणना र सामर्थ्यको वर्णन, (१२—१९) दुबै सेनाहरूको शंखध्वनिको वर्णन, (२०—२७) अर्जुनद्वारा सेनानिरीक्षणको प्रसंग, (२८—४७) मोहले व्याप्त भएका अर्जुनको कायरता, स्नेह र शोकयुक्त वचन।*

**[ धृतराष्ट्रको युद्ध-विवरण-विषयक प्रश्न। ]**

धृतराष्ट्र उवाच

**धर्मक्षेत्रे कुरुक्षेत्रे समवेता युयुत्सवः।**
**मामकाः पाण्डवाश्चैव किमकुर्वत सञ्जय॥ १॥**

पदच्छेदः—

धर्मक्षेत्रे, कुरुक्षेत्रे, समवेताः, युयुत्सवः,
मामकाः, पाण्डवाः, च, एव, किम्, अकुर्वत, सञ्जय॥ १॥

| अन्वयः | | शब्दार्थः | अन्वयः | | शब्दार्थः |
|---|---|---|---|---|---|
| | | **धृतराष्ट्र भन्दछन्—** | | | |
| **सञ्जय** | = | हे संजय! | **युयुत्सवः** | = | युद्धको चाहना गर्ने |
| **धर्मक्षेत्रे** | = | धर्मभूमि | | | |
| **कुरुक्षेत्रे** | = | कुरुक्षेत्रमा | **मामकाः** | = | मेरा |
| **समवेताः** | = | एकत्रित भएका | **च** | = | र |

| | | | |
|---|---|---|---|
| **एव** | = * | **किम्** | = के |
| **पाण्डवाः** | = पाण्डुका पुत्रहरूले | **अकुर्वत** | = गरे ? |

[ द्रोणाचार्यका नजिकमा गएर दुर्योधनले कुराकानी सुरू गरेको वर्णन । ]

*सञ्जय उवाच*

**दृष्ट्वा तु पाण्डवानीकं व्यूढं दुर्योधनस्तदा ।**
**आचार्यमुपसङ्गम्य राजा वचनमब्रवीत् ॥ २ ॥**

दृष्ट्वा, तु, पाण्डवानीकम्, व्यूढम्, दुर्योधनः, तदा,
आचार्यम्, उपसङ्गम्य, राजा, वचनम्, अब्रवीत् ॥ २ ॥

**यसपछि संजय भन्दछन्—**

| | | | |
|---|---|---|---|
| **तदा** | = त्यसबेला | **दृष्ट्वा** | = देखे |
| **राजा** | = राजा | **तु** | = अनि |
| **दुर्योधनः** | = दुर्योधनले | **आचार्यम्** | = द्रोणाचार्यका |
| **व्यूढम्** | = व्यूहरचनाले युक्त | **उपसङ्गम्य** | = नजिकमा गएर (यो) |
| **पाण्डवानीकम्** | = { पाण्डवहरूको सेनालाई | **वचनम्** | = वचन |
| | | **अब्रवीत्** | = भने । |

[ विशाल पाण्डवसेना हेर्नको लागि द्रोणाचार्यसँग दुर्योधनको प्रार्थना । ]

**पश्यैतां पाण्डुपुत्राणामाचार्य महतीं चमूम् ।**
**व्यूढां द्रुपदपुत्रेण तव शिष्येण धीमता ॥ ३ ॥**

पश्य, एताम्, पाण्डुपुत्राणाम्, आचार्य, महतीम्, चमूम्,
व्यूढाम्, द्रुपदपुत्रेण, तव, शिष्येण, धीमता ॥ ३ ॥

| | | | |
|---|---|---|---|
| **आचार्य** | = हे आचार्य ! | **द्रुपदपुत्रेण** | = { द्रुपदपुत्र धृष्टद्युम्नद्वारा |
| **तव** | = हजुरका | | |
| **धीमता** | = बुद्धिमान् | **व्यूढाम्** | = { व्यूहाकाररूपमा खडा गरिएको |
| **शिष्येण** | = शिष्य | | |

* यहाँ 'एव' शब्द समुच्चयार्थक नै हो ।

| | | | |
|---|---|---|---|
| पाण्डुपुत्राणाम् | = पाण्डु-पुत्रहरूको | चमूम् | = सेनालाई |
| एताम् | = यो | | |
| महतीम् | = विशाल | पश्य | = हेर्नुहोस्। |

[ पाण्डवसेनाका प्रमुख योद्धाहरूको नाम। ]

**अत्र शूरा महेष्वासा भीमार्जुनसमा युधि।**
**युयुधानो विराटश्च द्रुपदश्च महारथः ॥ ४ ॥**
**धृष्टकेतुश्चेकितानः काशिराजश्च वीर्यवान्।**
**पुरुजित्कुन्तिभोजश्च शैब्यश्च नरपुङ्गवः ॥ ५ ॥**
**युधामन्युश्च विक्रान्त उत्तमौजाश्च वीर्यवान्।**
**सौभद्रो द्रौपदेयाश्च सर्व एव महारथाः ॥ ६ ॥**

अत्र, शूराः, महेष्वासाः, भीमार्जुनसमाः, युधि,
युयुधानः, विराटः, च, द्रुपदः, च, महारथः ॥ ४ ॥
धृष्टकेतुः, चेकितानः, काशिराजः, च, वीर्यवान्,
पुरुजित्, कुन्तिभोजः, च, शैब्यः, च, नरपुङ्गवः ॥ ५ ॥
युधामन्युः, च, विक्रान्तः, उत्तमौजाः, च, वीर्यवान्,
सौभद्रः, द्रौपदेयाः, च, सर्वे, एव, महारथाः ॥ ६ ॥

| | | | |
|---|---|---|---|
| अत्र | = यो सेनामा | च | = र |
| महेष्वासाः | = ठूलाठूला धनुष धारण गरेका | विराटः | = विराट |
| | | च | = तथा |
| च | = तथा | महारथः | = महारथी |
| युधि | = युद्धमा | द्रुपदः | = राजा द्रुपद, |
| भीमार्जुनसमाः | = भीम र अर्जुनकै समान | धृष्टकेतुः | = धृष्टकेतु |
| | | च | = र |
| शूराः | = शूर-वीर | चेकितानः | = चेकितान |
| युयुधानः | = सात्यकि | च | = तथा |

| | | |
|---|---|---|
| **वीर्यवान्** | = | बलवान् |
| **काशिराजः** | = | काशिराज, |
| **पुरुजित्** | = | पुरुजित्, |
| **कुन्तिभोजः** | = | कुन्तिभोज |
| **च** | = | र |
| **नरपुङ्गवः** | = | मनुष्यहरूमा श्रेष्ठ |
| **शैब्यः** | = | शैब्य, |
| **विक्रान्तः** | = | पराक्रमी |
| **युधामन्युः** | = | युधामन्यु |
| **च** | = | तथा |
| **वीर्यवान्** | = | बलवान् |
| **उत्तमौजाः** | = | उत्तमौजा, |
| **सौभद्रः** | = | सुभद्रापुत्र अभिमन्यु |
| **च** | = | एवं |
| **द्रौपदेयाः** | = | द्रौपदीका पाँचै पुत्र—(यी) |
| **सर्वे, एव** | = | सबै |
| **महारथाः** | = | महारथी |
| **( सन्ति )** | = | हुन्। |

**[ आफ्नो सेनाका प्रधान सेना-नायकहरूलाई राम्ररी जान्नको लागि द्रोणाचार्यसँग दुर्योधनको प्रार्थना। ]**

**अस्माकं तु विशिष्टा ये तान्निबोध द्विजोत्तम।**
**नायका मम सैन्यस्य सञ्ज्ञार्थं तान्ब्रवीमि ते॥ ७॥**

अस्माकम्, तु, विशिष्टाः, ये, तान्, निबोध, द्विजोत्तम,
नायकाः, मम, सैन्यस्य, सञ्ज्ञार्थम्, तान्, ब्रवीमि, ते॥ ७॥

| | | |
|---|---|---|
| **द्विजोत्तम** | = | हे ब्राह्मणश्रेष्ठ! |
| **अस्माकम्** | = | हाम्रो पक्षमा |
| **तु** | = | पनि |
| **ये** | = | जो |
| **विशिष्टाः** | = | प्रमुख |
| **( सन्ति )** | = | छन्, |
| **तान्** | = | तिनलाई (हजुर) |
| **निबोध** | = | सम्झनुहोस्। |
| **ते** | = | हजुरको |
| **सञ्ज्ञार्थम्** | = | जानकारीका लागि |
| **मम** | = | मेरो |
| **सैन्यस्य** | = | सेनाका (जो-जो) |
| **नायकाः** | = | सेनापति (छन्), |
| **तान्** | = | तिनलाई |
| **ब्रवीमि** | = | बताउँछु। |

[ तिनीहरूमध्ये केही को नाम र सबै वीरहरूको पराक्रम तथा युद्ध-कौशलको वर्णन। ]

**भवान्भीष्मश्च कर्णश्च कृपश्च समितिञ्जयः।**
**अश्वत्थामा विकर्णश्च सौमदत्तिस्तथैव च ॥ ८ ॥**

भवान्, भीष्मः, च, कर्णः, च, कृपः, च, समितिञ्जयः,
अश्वत्थामा, विकर्णः, च, सौमदत्तिः, तथा, एव, च ॥ ८ ॥

**एक त स्वयम्—**

| | | | |
|---|---|---|---|
| **भवान्** | = तपाईं–द्रोणाचार्य | **च** | = तथा |
| **च** | = र | **तथा** | = त्यस्तै |
| **भीष्मः** | = पितामह भीष्म | **एव** | = नै |
| **च** | = तथा | **अश्वत्थामा** | = अश्वत्थामा, |
| **कर्णः** | = कर्ण | **विकर्णः** | = विकर्ण |
| **च** | = र | **च** | = र |
| **समितिञ्जयः** | = संग्रामविजयी | **सौमदत्तिः** | = सोमदत्तका पुत्र भूरिश्रवा |
| **कृपः** | = कृपाचार्य | | |

**अन्ये च बहवः शूरा मदर्थे त्यक्तजीविताः।**
**नानाशस्त्रप्रहरणाः सर्वे युद्धविशारदाः ॥ ९ ॥**

अन्ये, च, बहवः, शूराः, मदर्थे, त्यक्तजीविताः,
नानाशस्त्रप्रहरणाः, सर्वे, युद्धविशारदाः ॥ ९ ॥

**तथा—**

| | | | |
|---|---|---|---|
| **अन्ये** | = अरू | **शूराः** | = शूरवीर |
| **च** | = पनि | **नानाशस्त्रप्रहरणाः** | = अनेक प्रकारका शस्त्रास्त्रहरूले सुसज्जित (र) |
| **मदर्थे** | = मेरा लागि | | |
| **त्यक्तजीविताः** | = जीवनकै आशा त्यागिदिने | **सर्वे** | = एक-से -एक |
| | | **युद्धविशारदाः** | = युद्धकलामा चतुर |
| **बहवः** | = धेरै | **(सन्ति)** | = छन्। |

[दुर्योधनले पाण्डव-सेनाको अगाडि आफ्नो सेनालाई अजेय बताउनु।]

**अपर्याप्तं तदस्माकं बलं भीष्माभिरक्षितम्।**
**पर्याप्तं त्विदमेतेषां बलं भीमाभिरक्षितम्॥ १०॥**

अपर्याप्तम्, तत्, अस्माकम्, बलम्, भीष्माभिरक्षितम्,
पर्याप्तम्, तु, इदम्, एतेषाम्, बलम्, भीमाभिरक्षितम्॥ १०॥

र—

| | | | |
|---|---|---|---|
| **भीष्माभिरक्षितम्** | = भीष्मपितामह-द्वारा रक्षित | **तु** | = र |
| | | **भीमाभिरक्षितम्** | = भीमद्वारा रक्षित |
| **अस्माकम्** | = हाम्रो | **एतेषाम्** | = यिनीहरूको |
| **तत्** | = यो | **इदम्** | = यो |
| **बलम्** | = सेना | **बलम्** | = सेना |
| **अपर्याप्तम्** | = सबै प्रकारले अजेय छ | **पर्याप्तम्** | = जित्नका लागि सुगम छ। |

[सबै वीरहरूलाई भीष्मको रक्षा गर्नका लागि दुर्योधनको अनुरोध।]

**अयनेषु च सर्वेषु यथाभागमवस्थिताः।**
**भीष्ममेवाभिरक्षन्तु भवन्तः सर्व एव हि॥ ११॥**

अयनेषु, च, सर्वेषु, यथाभागम्, अवस्थिताः,
भीष्मम्, एव, अभिरक्षन्तु, भवन्तः, सर्वे, एव, हि॥ ११॥

| | | | |
|---|---|---|---|
| **च** | = तसर्थ | **सर्वे, एव** | = सबैले |
| **सर्वेषु** | = सबै | **हि** | = निःसन्देह |
| **अयनेषु** | = मोर्चाहरूमा | **भीष्मम्** | = भीष्मपितामहको |
| **यथाभागम्** | = आ-आफ्ना ठाउँमा | **एव** | = नै |
| **अवस्थिताः** | = स्थित रहेर | | |
| **भवन्तः** | = तपाईहरू | **अभिरक्षन्तु** | = सबैतिरबाट रक्षा गर्नुहोस्। |

[ दुर्योधनको प्रसन्नताको लागि भीष्मले गर्जिएर शंख बजाएका र कौरव-सेनामा शंख-नगारा आदि विभिन्न बाजाहरू एक साथ बजेको वर्णन। ]

**तस्य सञ्जनयन्हर्षं कुरुवृद्धः पितामहः।**
**सिंहनादं विनद्योच्चैः शङ्खं दध्मौ प्रतापवान्॥ १२॥**

तस्य, सञ्जनयन्, हर्षम्, कुरुवृद्धः, पितामहः,
सिंहनादम्, विनद्य, उच्चैः, शङ्खम्, दध्मौ, प्रतापवान्॥ १२॥

**यस प्रकार द्रोणाचार्यसँग दुर्योधनले भनेका कुराहरूलाई सुनेर—**

| | | | | | |
|---|---|---|---|---|---|
| **कुरुवृद्धः** | = | कौरवहरूमा वृद्ध | **उच्चैः** | = | उच्च स्वरले |
| **प्रतापवान्** | = | निकै प्रतापी | **सिंहनादम्** | = | सिंहकै गर्जना-को समान |
| **पितामहः** | = | पितामह भीष्मले | | | |
| **तस्य** | = | त्यस (दुर्योधन)-को (हृदयमा) | **विनद्य** | = | गर्जिएर |
| | | | **शङ्खम्** | = | शंख |
| **हर्षम्** | = | हर्ष | | | |
| **सञ्जनयन्** | = | पैदा गर्दै | **दध्मौ** | = | बजाए। |

**ततः शङ्खाश्च भेर्यश्च पणवानकगोमुखाः।**
**सहसैवाभ्यहन्यन्त स शब्दस्तुमुलोऽभवत्॥ १३॥**

ततः, शङ्खाः, च, भेर्यः, च, पणवानकगोमुखाः,
सहसा, एव, अभ्यहन्यन्त, सः, शब्दः, तुमुलः, अभवत्॥ १३॥

| | | | | | |
|---|---|---|---|---|---|
| **ततः** | = | त्यसपछि | **सहसा** | = | एक साथ |
| **शङ्खाः** | = | शंख | **एव** | = | नै |
| **च** | = | र | **अभ्यहन्यन्त** | = | बजे। (तिनका) |
| **भेर्यः** | = | नगारा | | | |
| **च** | = | तथा | **सः** | = | त्यो |
| **पणवानक-गोमुखाः** | = | ढोल, मृदंग र नरसिंह आदि बाजा | **शब्दः** | = | शब्द |
| | | | **तुमुलः** | = | अत्यन्त भयंकर |
| | | | **अभवत्** | = | भयो। |

[ क्रमशः श्रीकृष्ण, अर्जुन, भीमसेन, युधिष्ठिर, नकुल, सहदेव र पाण्डव-सेनाका अन्य समस्त विशिष्ट योद्धाहरूले आ-आफ्ना शंखहरूलाई बजाए। ]

**ततः श्वेतैर्हयैर्युक्ते महति स्यन्दने स्थितौ।**
**माधवः पाण्डवश्चैव दिव्यौ शङ्खौ प्रदध्मतुः ॥ १४ ॥**

ततः, श्वेतैः, हयैः, युक्ते, महति, स्यन्दने, स्थितौ,
माधवः, पाण्डवः, च, एव, दिव्यौ, शङ्खौ, प्रदध्मतुः ॥ १४ ॥

| | | | |
|---|---|---|---|
| **ततः** | = त्यसपछि | **माधवः** | = श्रीकृष्ण महाराज |
| **श्वेतैः** | = सेता | **च** | = र |
| **हयैः** | = घोडाहरूले | **पाण्डवः** | = अर्जुनले |
| **युक्ते** | = युक्त | **एव** | = पनि |
| **महति** | = उत्तम | **दिव्यौ** | = अलौकिक |
| **स्यन्दने** | = रथमा | **शङ्खौ** | = शंख |
| **स्थितौ** | = बिराजमान | **प्रदध्मतुः** | = बजाउनुभयो। |

**पाञ्चजन्यं हृषीकेशो देवदत्तं धनञ्जयः।**
**पौण्ड्रं दध्मौ महाशङ्खं भीमकर्मा वृकोदरः ॥ १५ ॥**

पाञ्चजन्यम्, हृषीकेशः, देवदत्तम्, धनञ्जयः,
पौण्ड्रम्, दध्मौ, महाशङ्खम्, भीमकर्मा, वृकोदरः ॥ १५ ॥

तिनमा—

| | | | |
|---|---|---|---|
| **हृषीकेशः** | = { श्रीकृष्ण महाराजले | **भीमकर्मा** | = { भयानक कर्म गर्ने |
| **पाञ्चजन्यम्** | = { पांचजन्य-नामक, | **वृकोदरः** | = भीमसेनले |
| **धनञ्जयः** | = अर्जुनले | **पौण्ड्रम्** | = पौण्ड्र नामक |
| **देवदत्तम्** | = { देवदत्त नामक (र) | **महाशङ्खम्** | = महाशंख |
| | | **दध्मौ** | = बजाए। |

**अनन्तविजयं राजा कुन्तीपुत्रो युधिष्ठिरः ।**
**नकुलः सहदेवश्च सुघोषमणिपुष्पकौ ॥ १६ ॥**

अनन्तविजयम्, राजा, कुन्तीपुत्रः, युधिष्ठिरः,
नकुलः, सहदेवः, च, सुघोषमणिपुष्पकौ ॥ १६ ॥

| | | | |
|---|---|---|---|
| **कुन्तीपुत्रः** | = कुन्तीपुत्र | **च** | = तथा |
| **राजा** | = राजा | **सहदेवः** | = सहदेवले |
| **युधिष्ठिरः** | = युधिष्ठिरले | **सुघोष-मणिपुष्पकौ** | = सुघोष र मणिपुष्पक नामक शंख (बजाए) । |
| **अनन्तविजयम्** | = अनन्तविजय नामक (र) | | |
| **नकुलः** | = नकुल | | |

**काश्यश्च परमेष्वासः शिखण्डी च महारथः ।**
**धृष्टद्युम्नो विराटश्च सात्यकिश्चापराजितः ॥ १७ ॥**
**द्रुपदो द्रौपदेयाश्च सर्वशः पृथिवीपते ।**
**सौभद्रश्च महाबाहुः शङ्खान्दध्मुः पृथक्पृथक् ॥ १८ ॥**

काश्यः, च, परमेष्वासः, शिखण्डी, च, महारथः,
धृष्टद्युम्नः, विराटः, च, सात्यकिः, च, अपराजितः ॥ १७ ॥
द्रुपदः, द्रौपदेयाः, च, सर्वशः, पृथिवीपते,
सौभद्रः, च, महाबाहुः, शङ्खान्, दध्मुः, पृथक्, पृथक् ॥ १८ ॥

| | | | |
|---|---|---|---|
| **परमेष्वासः** | = श्रेष्ठ धनुर्धर | **च** | = तथा |
| **काश्यः** | = काशिराज | **विराटः** | = राजा विराट |
| **च** | = र | **च** | = र |
| **महारथः** | = महारथी | **अपराजितः** | = अजेय |
| **शिखण्डी** | = शिखण्डी | **सात्यकिः** | = सात्यकि, |
| **च** | = एवं | **द्रुपदः** | = राजा द्रुपद |
| **धृष्टद्युम्नः** | = धृष्टद्युम्न | **च** | = एवं |

| | | | |
|---|---|---|---|
| द्रौपदेयाः | = द्रौपदीका पाँचै पुत्र | पृथिवीपते | = हे राजन्! |
| च | = र | सर्वशः | = सबैतिरबाट |
| महाबाहुः | = महाबाहु | पृथक्-पृथक् | = अलग-अलग |
| सौभद्रः | = सुभद्रापुत्र अभिमन्यु—(यी सबैले) | शङ्खान् | = शंख |
| | | दध्मुः | = बजाए। |

[ पाण्डव-सेनाको भयंकर शंख-ध्वनिले आकाश र पृथ्वीलाई गुञ्जाउँदै दुर्योधनादि व्यथित भएको वर्णन। ]

**स घोषो धार्तराष्ट्राणां हृदयानि व्यदारयत्।**
**नभश्च पृथिवीं चैव तुमुलो व्यनुनादयन्॥ १९॥**

सः, घोषः, धार्तराष्ट्राणाम्, हृदयानि, व्यदारयत्,
नभः, च, पृथिवीम्, च, एव, तुमुलः, व्यनुनादयन्॥ १९॥

| | | | |
|---|---|---|---|
| च | = र | एव | = पनि |
| सः | = त्यस | व्यनुनादयन् | = गुञ्जाउँदै |
| तुमुलः | = भयानक | धार्तराष्ट्राणाम् | = धृतराष्ट्रका यानि तिनका पक्षको |
| घोषः | = शब्दले | | |
| नभः | = आकाश | | |
| च | = र | हृदयानि | = हृदय |
| पृथिवीम् | = पृथ्वीलाई | व्यदारयत् | = विदीर्ण गरिदियो। |

[ धृतराष्ट्रपुत्रहरूलाई युद्धको लागि तैयार देखेर अर्जुनले श्रीकृष्णसित आफ्नो रथ दुबै सेनाहरूको बीचमा लैजानको लागि अनुरोध। ]

**अथ व्यवस्थितान्दृष्ट्वा धार्तराष्ट्रान्कपिध्वजः।**
**प्रवृत्ते शस्त्रसम्पाते धनुरुद्यम्य पाण्डवः॥ २०॥**
**हृषीकेशं तदा वाक्यमिदमाह महीपते।**

*अर्जुन उवाच*

**सेनयोरुभयोर्मध्ये रथं स्थापय मेऽच्युत॥ २१॥**

अथ, व्यवस्थितान्, दृष्ट्वा, धार्तराष्ट्रान्, कपिध्वजः,
प्रवृत्ते, शस्त्रसम्पाते, धनुः, उद्यम्य, पाण्डवः॥ २०॥
हृषीकेशम्, तदा, वाक्यम्, इदम्, आह, महीपते,
सेनयोः, उभयोः, मध्ये, रथम्, स्थापय, मे, अच्युत॥ २१॥

| | | | |
|---|---|---|---|
| **महीपते** | = हे राजन्! | **उद्यम्य** | = उठाई |
| **अथ** | = यसपछि | **हृषीकेशम्** | = हृषीकेश श्रीकृष्ण महाराजसित |
| **कपिध्वजः** | = कपिध्वज | **इदम्** | = यो |
| **पाण्डवः** | = अर्जुनले | **वाक्यम्** | = वचन |
| **व्यवस्थितान्** | = मोर्चा बाँधेर खडा भएका | **आह** | = भने— |
| **धार्तराष्ट्रान्** | = धृतराष्ट्रका- सम्बन्धीहरूलाई | **अच्युत** | = हे अच्युत! |
| **दृष्ट्वा** | = देखेर, | **मे** | = मेरो |
| **तदा** | = त्यो | **रथम्** | = रथलाई |
| **शस्त्रसम्पाते** | = शस्त्र चल्ने तयारीका | **उभयोः** | = दुबै |
| **प्रवृत्ते** | = समय | **सेनयोः** | = सेनाहरूको |
| **धनुः** | = धनुष | **मध्ये** | = बीचमा |
| | | **स्थापय** | = उभ्याउनुहोस्। |

**[ रथलाई त्यहीं उभ्याई राख्न संकेत गर्दै सबैलाई हेर्ने इच्छा प्रकट गर्नु।]**

**यावदेतान्निरीक्षेऽहं योद्धुकामानवस्थितान्।**
**कैर्मया सह योद्धव्यमस्मिन्रणसमुद्यमे॥ २२॥**

यावत्, एतान्, निरीक्षे, अहम्, योद्धुकामान्, अवस्थितान्,
कैः, मया, सह, योद्धव्यम्, अस्मिन्, रणसमुद्यमे॥ २२॥

र—

| | | | |
|---|---|---|---|
| **यावत्** | = जबसम्म (कि) | **अस्मिन्** | = यो |
| **अहम्** | = म | **रणसमुद्यमे** | = युद्धरूपी व्यापारमा |
| **अवस्थितान्** | = { युद्ध-क्षेत्रमा खडा भएका | **मया** | = मैले |
| | | **कैः** | = कुन-कुनका |
| **योद्धुकामान्** | = { युद्धका अभिलाषी | **सह** | = साथ |
| **एतान्** | = { यी विपक्षी योद्धाहरूलाई | **योद्धव्यम्** | = { युद्ध गर्न योग्य छ (तबसम्म यसलाई खडा राख्नुहोस्)। |
| **निरीक्षे** | = { राम्ररी देख्ने छु (कि) | | |

**योत्स्यमानानवेक्षेऽहं य एतेऽत्र समागताः।**
**धार्तराष्ट्रस्य दुर्बुद्धेर्युद्धे प्रियचिकीर्षवः॥ २३॥**

योत्स्यमानान्, अवेक्षे, अहम्, ये, एते, अत्र, समागताः,
धार्तराष्ट्रस्य, दुर्बुद्धेः, युद्धे, प्रियचिकीर्षवः॥ २३॥

र—

| | | | |
|---|---|---|---|
| **दुर्बुद्धेः** | = बुद्धिहिन | **समागताः** | = आएका छन् (ती) |
| **धार्तराष्ट्रस्य** | = दुर्योधनको | | |
| **युद्धे** | = युद्धमा | | |
| **प्रियचिकीर्षवः** | = भलाइ चाहने | **योत्स्यमानान्** | = { युद्ध गर्नेहरूलाई |
| **ये** | = जो-जो | | |
| **एते** | = यी राजाहरू | **अहम्** | = म |
| **अत्र** | = यस सेनामा | **अवेक्षे** | = हेर्न चाहन्छु। |

**[ रथलाई दुबै सेनाहरूको बीचमा उभ्याउँदै श्रीकृष्णले युद्धको लागि एकत्रित सबै वीरहरूलाई हेर्नका लागि अर्जुनलाई भन्नु।]**

*सञ्जय उवाच*

**एवमुक्तो हृषीकेशो गुडाकेशेन भारत।**
**सेनयोरुभयोर्मध्ये स्थापयित्वा रथोत्तमम्॥ २४॥**

**भीष्मद्रोणप्रमुखतः सर्वेषां च महीक्षिताम्।**
**उवाच पार्थ पश्यैतान्समवेतान्कुरूनिति॥ २५॥**

एवम्, उक्तः, हृषीकेशः, गुडाकेशेन, भारत,
सेनयोः, उभयोः, मध्ये, स्थापयित्वा, रथोत्तमम्॥ २४॥
भीष्मद्रोणप्रमुखतः, सर्वेषाम्, च, महीक्षिताम्,
उवाच, पार्थ, पश्य, एतान्, समवेतान्, कुरून्, इति॥ २५॥

**संजय भन्दछन्—**

| | | |
|---|---|---|
| **भारत** | = | हे धृतराष्ट्र! |
| **गुडाकेशेन** | = | अर्जुनद्वारा |
| **एवम्** | = | यस प्रकार |
| **उक्तः** | = | भनिसकेपछि |
| **हृषीकेशः** | = | महाराज श्रीकृष्णचन्द्रले |
| **उभयोः** | = | दुबै |
| **सेनयोः** | = | सेनाहरूको |
| **मध्ये** | = | बीचमा |
| **भीष्मद्रोणप्रमुखतः** | = | भीष्म र द्रोणाचार्यका सामुन्ने |

| | | |
|---|---|---|
| **च** | = | र |
| **सर्वेषाम्** | = | सम्पूर्ण |
| **महीक्षिताम्** | = | राजाहरूको सामुन्ने |
| **रथोत्तमम्** | = | उत्तम रथलाई |
| **स्थापयित्वा** | = | उभ्याएर |
| **इति** | = | यस प्रकार |
| **उवाच** | = | भन्नुभयो (कि) |
| **पार्थ** | = | हे पार्थ! (युद्धको लागि) |
| **समवेतान्** | = | जुटेका |
| **एतान्** | = | यी |
| **कुरून्** | = | कौरवहरूलाई |
| **पश्य** | = | हेर। |

[स्वजन-समुदायलाई देखेर अर्जुन व्याकुल हुनु र अर्जुनद्वारा आफ्नू शोकाकुल स्थितिको वर्णन।]

**तत्रापश्यत्स्थितान्पार्थः पितॄनथ पितामहान्।**
**आचार्यान्मातुलान्भ्रातॄन्पुत्रान्पौत्रान्सखींस्तथा॥ २६॥**
**श्वशुरान्सुहृदश्चैव सेनयोरुभयोरपि।**

तत्र, अपश्यत्, स्थितान्, पार्थः, पितॄन्, अथ, पितामहान्,
आचार्यान्, मातुलान्, भ्रातॄन्, पुत्रान्, पौत्रान्, सखीन् ॥ २६ ॥
तथा श्वशुरान्, सुहृदः, च, एव, सेनयोः, उभयोः, अपि,

| | | | |
|---|---|---|---|
| **अथ** | = त्यसपछि | **भ्रातॄन्** | = भाइहरूलाई, |
| **पार्थः** | = पृथापुत्र अर्जुनले | **पुत्रान्** | = छोराहरूलाई, |
| **तत्र** | = ती | **पौत्रान्** | = नातिहरूलाई, |
| **उभयोः** | = दुवै | | |
| **एव** | = नै | **तथा** | = तथा |
| **सेनयोः** | = सेनाहरूमा | **सखीन्** | = मित्रहरूलाई, |
| **स्थितान्** | = रहेका | **श्वशुरान्** | = ससुराहरूलाई, |
| **पितॄन्** | = ठूलाबा-काकाहरू | **च** | = र |
| **पितामहान्** | = हजुरबा-बूढाहजुरबाहरू | **सुहृदः** | = इष्टमित्रहरू |
| **आचार्यान्** | = गुरुहरूलाई, | **अपि** | = पनि |
| **मातुलान्** | = मामाहरूलाई, | **अपश्यत्** | = देखे। |

**तान्समीक्ष्य स कौन्तेयः सर्वान्बन्धूनवस्थितान् ॥ २७ ॥**
**कृपया परयाविष्टो विषीदन्निदमब्रवीत्।**

तान्, समीक्ष्य, सः, कौन्तेयः, सर्वान्, बन्धून् अवस्थितान्, ॥ २७ ॥
कृपया, परया, आविष्टः, विषीदन्, इदम्, अब्रवीत्,

**यस प्रकार—**

| | | | |
|---|---|---|---|
| **तान्** | = ती | **परया** | = अत्यन्त |
| **अवस्थितान्** | = उपस्थित | **कृपया** | = करुणाले |
| **सर्वान्** | = सम्पूर्ण | **आविष्टः** | = युक्त भई |
| **बन्धून्** | = बन्धुबान्धवहरूलाई | | |
| **समीक्ष्य** | = देखेर | **विषीदन्** | = शोक गर्दै |
| **सः** | = ती | **इदम्** | = यो (वचन) |
| **कौन्तेयः** | = कुन्तीपुत्र अर्जुन | **अब्रवीत्** | = भने। |

अर्जुन उवाच

**दृष्ट्वेमं स्वजनं कृष्ण युयुत्सुं समुपस्थितम्॥ २८॥**
**सीदन्ति मम गात्राणि मुखं च परिशुष्यति।**
**वेपथुश्च शरीरे मे रोमहर्षश्च जायते॥ २९॥**

दृष्ट्वा, इमम्, स्वजनम्, कृष्ण, युयुत्सुम्, समुपस्थितम्॥ २८॥
सीदन्ति, मम, गात्राणि, मुखम्, च, परिशुष्यति,
वेपथुः, च, शरीरे, मे, रोमहर्षः, च, जायते॥ २९॥

**अर्जुनले भने—**

| | | | |
|---|---|---|---|
| **कृष्ण** | = { हे कृष्ण!, (युद्ध-क्षेत्रमा) | **सीदन्ति** | = { शिथिल हुँदै गइरहेका छन् |
| | | **च** | = र |
| **समुपस्थितम्** | =डटेका(खडा भएका) | **मुखम्** | = मुख |
| **युयुत्सुम्** | = { युद्धका अभिलाषी | **परिशुष्यति** | = सुक्दै छ |
| | | **च** | = तथा |
| **इमम्** | = यी | **मे** | = मेरो |
| **स्वजनम्** | = { स्वजन-समुदायलाई | **शरीरे** | = शरीरमा |
| | | **वेपथुः** | = कम्प |
| **दृष्ट्वा** | = देखेर | **च** | = एवं |
| **मम** | = मेरा | **रोमहर्षः** | = रोमाञ्च |
| **गात्राणि** | = अंग | **जायते** | = भैरहेको छ। |

**गाण्डीवं स्रंसते हस्तात्त्वक्चैव परिदह्यते।**
**न च शक्नोम्यवस्थातुं भ्रमतीव च मे मनः॥ ३०॥**

गाण्डीवम्, स्रंसते, हस्तात्, त्वक्, च, एव, परिदह्यते,
न, च, शक्नोमि, अवस्थातुम्, भ्रमति, इव, च, मे, मनः॥ ३०॥

तथा—

| | | | |
|---|---|---|---|
| **हस्तात्** | = हातबाट | **मे** | = मेरो |
| **गाण्डीवम्** | = गाण्डीव धनुष | **मनः** | = मन |
| **स्रंसते** | = खस्न लागेको छ | **भ्रमति, इव** | = श्रमित-जस्तो भइरहेको छ, |
| **च** | = र | | |
| **त्वक्** | = शरीरको छाला | **( अतः )** | = तसर्थ (म) |
| **एव** | = पनि | **अवस्थातुम्** | = उभिन |
| **परिदह्यते** | = पोलिरहेको छ | **च** | = पनि |
| **च** | = तथा | **न शक्नोमि** | = सकेको छैन। |

[ युद्धका विपरीत परिणामको वर्णन। ]

**निमित्तानि च पश्यामि विपरीतानि केशव।**
**न च श्रेयोऽनुपश्यामि हत्वा स्वजनमाहवे॥ ३१॥**

निमित्तानि, च, पश्यामि, विपरीतानि, केशव,
न, च, श्रेयः, अनुपश्यामि, हत्वा, स्वजनम्, आहवे॥ ३१॥

र—

| | | | |
|---|---|---|---|
| **केशव** | = हे केशव! (मैले) | **स्वजनम्** | = स्वजन-समुदायलाई |
| **निमित्तानि** | = लक्षणहरू | | |
| **च** | = पनि | **हत्वा** | = मारेर |
| **विपरीतानि** | = विपरीत नै | **श्रेयः** | = कल्याण |
| **पश्यामि** | = देखिरहेको छु (तथा) | **च** | = पनि |
| **आहवे** | = युद्धमा | **न अनुपश्यामि** | = देख्दिन। |

[ अर्जुनले विजय र राज्य-सुख नचाहनुको युक्तिपूर्ण विचार। ]

**न काङ्क्षे विजयं कृष्ण न च राज्यं सुखानि च।**
**किं नो राज्येन गोविन्द किं भोगैर्जीवितेन वा॥ ३२॥**

न, काङ्क्षे, विजयम्, कृष्ण, न, च, राज्यम्, सुखानि, च,
किम्, नः, राज्येन, गोविन्द, किम्, भोगैः, जीवितेन, वा॥ ३२॥

र—

| | | | |
|---|---|---|---|
| **कृष्ण** | = हे कृष्ण! (म) | **गोविन्द** | = हे गोविन्द! |
| **न** | = न (त) | **नः** | = हामीलाई (यस्तो) |
| **विजयम्** | = विजय | **राज्येन** | = राज्यले |
| **काङ्क्षे** | = चाहन्छु | **किम्** | = के हुन्छ, |
| **च** | = र | **वा** | = अथवा (यस्तो) |
| **न** | = न | **भोगैः** | = भोगहरूले (र) |
| **राज्यम्** | = राज्य | **जीवितेन** | = जीवनद्वारा (पनि) |
| **च** | = तथा | **किम्** | = के (लाभ) छ र? |
| **सुखानि** | = सुखलाई (नै)। | | |

**येषामर्थे काङ्क्षितं नो राज्यं भोगाः सुखानि च।**
**त इमेऽवस्थिता युद्धे प्राणांस्त्यक्त्वा धनानि च॥ ३३॥**

येषाम्, अर्थे, काङ्क्षितम्, नः, राज्यम्, भोगाः, सुखानि, च,
ते, इमे, अवस्थिताः, युद्धे, प्राणान्, त्यक्त्वा, धनानि, च॥ ३३॥

**किन कि—**

| | | | |
|---|---|---|---|
| **नः** | = हामीलाई | **इमे** | = यी सबै |
| **येषाम्** | = जसको | **धनानि** | = धन |
| **अर्थे** | = लागि | **च** | = र |
| **राज्यम्** | = राज्य, | **प्राणान्** | = जीवन (को आशा)-लाई |
| **भोगाः** | = भोग | | |
| **च** | = र | | |
| **सुखानि** | = सुखादि | **त्यक्त्वा** | = त्यागेर |
| **काङ्क्षितम्** | = चाहिएको छ, | **युद्धे** | = युद्धमा |
| **ते** | = तिनी (नै) | **अवस्थिताः** | = उभिएका छन्। |

[ अर्जुनद्वारा आचार्यादि स्वजनहरूको वर्णन र तिनलाई नमार्ने इच्छा प्रकट गर्नु। ]

**आचार्याः पितरः पुत्रास्तथैव च पितामहाः।**
**मातुलाः श्वशुराः पौत्राः श्यालाः सम्बन्धिनस्तथा ॥ ३४ ॥**

आचार्याः, पितरः, पुत्राः, तथा, एव, च, पितामहाः,
मातुलाः, श्वशुराः, पौत्राः, श्यालाः, सम्बन्धिनः, तथा ॥ ३४ ॥

**जहाँ—**

| | | | |
|---|---|---|---|
| **आचार्याः** | = गुरुजन | **श्वशुराः** | = ससुराहरू, |
| **पितरः** | = ठूलाबा-काका, | **पौत्राः** | = नातिहरू, |
| **पुत्राः** | = छोराहरू | **श्यालाः** | = सालाहरू |
| **च** | = र | **तथा** | = तथा (अन्य कयौँ) |
| **तथा, एव** | = त्यसै गरी | | |
| **पितामहाः** | = हजुरबाहरू, | **सम्बन्धिनः** | = { आफन्तहरू (छन्)। |
| **मातुलाः** | = मामाहरू, | | |

**एतान्न हन्तुमिच्छामि घ्नतोऽपि मधुसूदन।**
**अपि त्रैलोक्यराज्यस्य हेतोः किं नु महीकृते ॥ ३५ ॥**

एतान्, न, हन्तुम्, इच्छामि, घ्नतः, अपि, मधुसूदन,
अपि, त्रैलोक्यराज्यस्य, हेतोः, किम्, नु, महीकृते ॥ ३५ ॥

**त्यसैले—**

| | | | |
|---|---|---|---|
| **मधुसूदन** | = { हे मधुसूदन! (मलाई) | **अपि** | = पनि (म) |
| | | **एतान्** | = यी सबैलाई |
| **घ्नतः** | = मार्न आइलागे | **हन्तुम्** | = मार्न |
| **अपि** | = भनेपनि (अथवा) | | |
| **त्रैलोक्यराज्यस्य** | = { तीनै लोकको राज्यको | **न इच्छामि** | = चाहन्न; (अनि) |
| | | **महीकृते** | = पृथ्वीको लागि (त) |
| **हेतोः** | = लागि | **नु किम्** | = भन्नु नै के छ र? |

[ आततायी भएता पनि दुर्योधनादि स्वजनहरूलाई मारेमा पापको प्राप्ति र सुख तथा प्रसन्नताको अभाव बताउनु। ]

**निहत्य धार्तराष्ट्रान्नः का प्रीतिः स्याज्जनार्दन।**
**पापमेवाश्रयेदस्मान्हत्वैतानाततायिनः ॥ ३६ ॥**

निहत्य, धार्तराष्ट्रान्, नः, का, प्रीतिः, स्यात्, जनार्दन,
पापम्, एव, आश्रयेत्, अस्मान्, हत्वा, एतान्, आततायिनः ॥ ३६ ॥

| | | | |
|---|---|---|---|
| **जनार्दन** | = हे जनार्दन! | **एतान्** | = यी |
| **धार्तराष्ट्रान्** | = धृतराष्ट्रका पुत्रहरूलाई | **आततायिनः** | = आततायीलाई |
| | | **हत्वा** | = मारेर (त) |
| **निहत्य** | = मारेर | **अस्मान्** | = हामीलाई |
| **नः** | = हामीलाई | **पापम्** | = पाप |
| **का** | = के | **एव** | = नै |
| **प्रीतिः** | = खुसी | **आश्रयेत्** | = लाग्नेछ। |
| **स्यात्** | = होला? | | |

**तस्मान्नार्हा वयं हन्तुं धार्तराष्ट्रान्स्वबान्धवान्।**
**स्वजनं हि कथं हत्वा सुखिनः स्याम माधव ॥ ३७ ॥**

तस्मात्, न, अर्हाः, वयम्, हन्तुम्, धार्तराष्ट्रान्, स्वबान्धवान्,
स्वजनम्, हि, कथम्, हत्वा, सुखिनः, स्याम, माधव ॥ ३७ ॥

| | | | |
|---|---|---|---|
| **तस्मात्** | = त्यसकारण | **न, अर्हाः** | = योग्य छैनौं; |
| **माधव** | = हे माधव! | **हि** | = किनकी |
| **स्वबान्धवान्** | = आफ्नै बान्धव | **स्वजनम्** | = आफ्नै कुटुम्बलाई |
| **धार्तराष्ट्रान्** | = धृतराष्ट्रका पुत्रहरूलाई | **हत्वा** | = मारेर (हामी) |
| | | **कथम्** | = कसरी |
| **हन्तुम्** | = मार्नको लागि | **सुखिनः** | = सुखी |
| **वयम्** | = हामी | **स्याम** | = हुनेछौं? |

[ अर्जुनद्वारा कुलको नाश र मित्रद्रोहले हुने पापबाट बच्नको लागि युद्ध नगर्न उचित बताउनु।]

**यद्यप्येते न पश्यन्ति लोभोपहतचेतसः।**
**कुलक्षयकृतं दोषं मित्रद्रोहे च पातकम्॥ ३८॥**
**कथं न ज्ञेयमस्माभिः पापादस्मान्निवर्तितुम्।**
**कुलक्षयकृतं दोषं प्रपश्यद्भिर्जनार्दन॥ ३९॥**

यद्यपि, एते, न, पश्यन्ति, लोभोपहतचेतसः,
कुलक्षयकृतम्, दोषम्, मित्रद्रोहे, च, पातकम्॥ ३८॥
कथम्, न, ज्ञेयम्, अस्माभिः, पापात्, अस्मात्, निवर्तितुम्,
कुलक्षयकृतम्, दोषम्, प्रपश्यद्भिः, जनार्दन॥ ३९॥

| | | | |
|---|---|---|---|
| **यद्यपि** | = हुन त | **जनार्दन** | = हे जनार्दन! |
| **लोभोपहतचेतसः** | = लोभले चित्तभ्रष्ट भएका | **कुलक्षयकृतम्** | = कुलको नाशले उत्पन्न |
| **एते** | = यी कौरवबन्धुहरू | **दोषम्** | = दोषलाई |
| **कुलक्षयकृतम्** | = कुलको नाशले उत्पन्न हुने | **प्रपश्यद्भिः** | = जान्ने भएका |
| **दोषम्** | = दोषलाई | **अस्माभिः** | = हामीहरूले |
| **च** | = र | **अस्मात्** | = यस |
| **मित्रद्रोहे** | = मित्रहरूसँग वैरभाव गर्नाले | **पापात्** | = पापबाट |
| **पातकम्** | = (हुने) पापलाई | **निवर्तितुम्** | = मुक्तिका लागि |
| **न पश्यन्ति** | = देख्दैनन्(ता पनि) | **कथम्** | = किन |
| | | **नज्ञेयम्** | = विचार नगर्नें |

[ कुल-नाशबाट उत्पन्न हुने दोषहरूको विस्तारपूर्वक वर्णन।]

**कुलक्षये प्रणश्यन्ति कुलधर्माः सनातनाः।**
**धर्मे नष्टे कुलं कृत्स्नमधर्मोऽभिभवत्युत॥ ४०॥**

कुलक्षये, प्रणश्यन्ति, कुलधर्माः, सनातनाः,
धर्मे, नष्टे, कुलम्, कृत्स्नम्, अधर्मः, अभिभवति, उत ॥ ४० ॥

**किनकि—**

| | | | | | |
|---|---|---|---|---|---|
| **कुलक्षये** | = | कुलको नाशबाट | **कृत्स्नम्** | = | सम्पूर्ण |
| **सनातनाः** | = | सनातन | **कुलम्** | = | कुलमा |
| **कुलधर्माः** | = | कुलधर्म | **अधर्मः** | = | पाप |
| **प्रणश्यन्ति** | = | नष्ट भै जान्छ, | **उत** | = | पनि |
| **धर्मे** | = | धर्मको | **अभिभवति** | = | प्रशस्त फैलन्छ। |
| **नष्टे** | = | नाश भै जानाले | | | |

**अधर्माभिभवात्कृष्ण प्रदुष्यन्ति कुलस्त्रियः।**
**स्त्रीषु दुष्टासु वार्ष्णेय जायते वर्णसङ्करः ॥ ४१ ॥**

अधर्माभिभवात्, कृष्ण, प्रदुष्यन्ति, कुलस्त्रियः,
स्त्रीषु, दुष्टासु, वार्ष्णेय, जायते, वर्णसङ्करः ॥ ४१ ॥

**तथा—**

| | | | | | |
|---|---|---|---|---|---|
| **कृष्ण** | = | हे कृष्ण! | **वार्ष्णेय** | = | हे वार्ष्णेय! |
| **अधर्माभिभवात्** | = | पाप धेरै बढ्नाले | **स्त्रीषु** | = | स्त्रीहरू |
| **कुलस्त्रियः** | = | कुलका स्त्रीहरू | **दुष्टासु** | = | दूषित हुँदा |
| **प्रदुष्यन्ति** | = | अत्यन्त दूषित हुन जान्छन् (र) | **वर्णसङ्करः** | = | वर्णसंकर |
| | | | **जायते** | = | उत्पन्न हुन्छ— |

**सङ्करो नरकायैव कुलघ्नानां कुलस्य च।**
**पतन्ति पितरो ह्येषां लुप्तपिण्डोदकक्रियाः ॥ ४२ ॥**

सङ्करः, नरकाय, एव, कुलघ्नानाम्, कुलस्य, च,
पतन्ति, पितरः, हि, एषाम्, लुप्तपिण्डोदकक्रियाः ॥ ४२ ॥

र ती—

| | | | |
|---|---|---|---|
| सङ्करः | = वर्णसंकर | क्रियाः | = क्रिया अर्थात् श्राद्ध र तर्पणबाट वंचित |
| कुलघ्नानाम् | = कुलघातीहरूलाई | | |
| च | = र | | |
| कुलस्य | = कुललाई | | |
| नरकाय | = नरकमा लाने | एषाम् | = तिनका |
| एव | = नै (कारण हो) | पितरः | = पितृजन |
| लुप्तपिण्डोदक- | = लोप भएका पिण्ड र जलको | हि | = अवश्य नै |
| | | पतन्ति | = अधोगतिलाई प्राप्त गर्दछन्। |

**दोषैरेतैः कुलघ्नानां वर्णसङ्करकारकैः।**
**उत्साद्यन्ते जातिधर्माः कुलधर्माश्च शाश्वताः ॥ ४३ ॥**

दोषैः, एतैः, कुलघ्नानाम्, वर्णसङ्करकारकैः, उत्साद्यन्ते, जातिधर्माः, कुलधर्माः, च, शाश्वताः ॥ ४३ ॥

र—

| | | | |
|---|---|---|---|
| एतैः | = यी | कुलधर्माः | = कुल-धर्म |
| वर्णसङ्करकारकैः | = वर्णसंकरकारक | च | = र |
| दोषैः | = दोषहरूले | | |
| कुलघ्नानाम् | = कुलघातीहरूका | जातिधर्माः | = जाति-धर्म |
| शाश्वताः | = सनातन | उत्साद्यन्ते | = नष्ट हुन जान्छन्। |

**उत्सन्नकुलधर्माणां मनुष्याणां जनार्दन।**
**नरकेऽनियतं वासो भवतीत्यनुशुश्रुम ॥ ४४ ॥**

उत्सन्नकुलधर्माणाम्, मनुष्याणाम्, जनार्दन, नरके, अनियतम्, वासः, भवति, इति, अनुशुश्रुम ॥ ४४ ॥

तथा—

| | | | |
|---|---|---|---|
| जनार्दन | = हे जनार्दन ! | अनियतम् | = अनन्त समयसम्म |
| उत्सन्नकुल-धर्माणाम् | = जसको कुल-धर्म नष्ट भएको छ, (त्यस्ता) | नरके | = नरकमा |
| | | वासः | = वास |
| | | भवति | = हुन्छ, |
| | | इति | = यस्तो (हामीले) |
| मनुष्याणाम् | = मानिसहरूको | अनुशुश्रुम | = सुन्दै आएका छौं। |

[राज्य र सुखादि लोभले स्वजनहरूलाई मार्नको लागि गरिएको युद्धको तैयारीलाई महान् पापको आरम्भ बताउनु एवं अर्जुनले दुर्योधनादिद्वारा आफू मारिनुलाई श्रेष्ठ बताउनु।]

**अहो बत महत्पापं कर्तुं व्यवसिता वयम्।**
**यद्राज्यसुखलोभेन हन्तुं स्वजनमुद्यताः ॥ ४५ ॥**

अहो, बत, महत्, पापम्, कर्तुम्, व्यवसिताः, वयम्,
यत्, राज्यसुखलोभेन, हन्तुम्, स्वजनम्, उद्यताः ॥ ४५ ॥

| | | | |
|---|---|---|---|
| अहो | = अहो ! | व्यवसिताः | = तयार भएका छौं, |
| बत | = अपसोचको कुरा ! | यत् | = जो |
| वयम् | = हामीहरू (बुद्धिमान् भएर पनि) | राज्यसुखलोभेन | = राज्य र सुखको लोभले |
| महत् | = महान् | स्वजनम् | = आफन्तलाई |
| पापम् | = पाप | हन्तुम् | = मार्नका लागि |
| कर्तुम् | = गर्नका लागि | उद्यताः | = उद्यत भएका छौं। |

**यदि मामप्रतीकारमशस्त्रं शस्त्रपाणयः।**
**धार्तराष्ट्रा रणे हन्युस्तन्मे क्षेमतरं भवेत् ॥ ४६ ॥**

यदि, माम्, अप्रतीकारम्, अशस्त्रम्, शस्त्रपाणयः,
धार्तराष्ट्राः, रणे, हन्युः, तत्, मे, क्षेमतरम्, भवेत् ॥ ४६ ॥

| | | | |
|---|---|---|---|
| **यदि** | = यदि | **रणे** | = रणमा |
| **माम्** | = म | **हन्युः** | = मारून् (त) |
| **अशस्त्रम्** | = शस्त्ररहित (एवं) | **तत्** | = त्यसरी (मारे भने) |
| **अप्रतीकारम्** | = { सामना नगर्नेलाई | **मे** | = मेरा लागि |
| **शस्त्रपाणयः** | = { शस्त्र हातमा लिएका | **क्षेमतरम्** | = { अत्यन्त कल्याण-कारक |
| **धार्तराष्ट्राः** | = धृतराष्ट्रका पुत्र | **भवेत्** | = हुनेछ। |

**[ युद्ध नगर्ने निश्चय गर्दै शोकनिमग्न अर्जुन शस्त्रत्यागपूर्वक रथमा बसेका कुरा बताउँदै संजयद्वारा अध्याय समाप्ति। ]**

*सञ्जय उवाच*

**एवमुक्त्वार्जुनः सङ्ख्ये रथोपस्थ उपाविशत्।**
**विसृज्य सशरं चापं शोकसंविग्नमानसः ॥ ४७ ॥**

एवम्, उक्त्वा, अर्जुनः, सङ्ख्ये, रथोपस्थे, उपाविशत्,
विसृज्य, सशरम्, चापम्, शोकसंविग्नमानसः ॥ ४७ ॥

**संजय भन्दछन् कि—**

| | | | |
|---|---|---|---|
| **सङ्ख्ये** | = रणभूमिमा | **सशरम्** | = बाणसहित |
| **शोकसंविग्न-मानसः** | = { शोकले व्याकुल मन भएका | **चापम्** | = धनुषलाई |
| | | **विसृज्य** | = त्यागेर |
| **अर्जुनः** | = अर्जुन | **रथोपस्थे** | = { रथको पछिल्लो भागमा |
| **एवम्** | = यस प्रकार | | |
| **उक्त्वा** | = भनेर | **उपाविशत्** | = बसे। |

ॐ तत्सदिति श्रीमद्भगवद्गीतासूपनिषत्सु ब्रह्मविद्यायां योगशास्त्रे श्रीकृष्णार्जुनसंवादेऽर्जुनविषादयोगो नाम प्रथमोऽध्यायः ॥ १ ॥

**हरिः ॐ तत्सत् हरिः ॐ तत्सत् हरिः ॐ तत्सत्**





**धृतराष्ट्र-संजय**

**(Dhṛtarāṣṭra-Sañjaya)**



सूर्यको उपदेश (Precept to Sun)

ॐ श्रीपरमात्मने नमः

# अथ द्वितीयोऽध्यायः

**प्रधान-विषय**—१ देखि १० सम्म अर्जुनको कायरताको विषयमा श्रीकृष्णार्जुनको संवाद, (११—३०) सांख्ययोगको विषय, (३१—३८) क्षात्रधर्म अनुसार युद्ध गर्नु आवश्यकताको निरूपण, (३९—५३) निष्काम कर्मयोगको विषय, (५४—७२) स्थिरबुद्धि पुरुषको लक्षण र त्यसको महिमा।

**[ संजयद्वारा अर्जुनको विषादको वर्णन।]**

*सञ्जय उवाच*

**तं तथा कृपयाविष्टमश्रुपूर्णाकुलेक्षणम्।**
**विषीदन्तमिदं वाक्यमुवाच मधुसूदनः ॥ १ ॥**

तम्, तथा, कृपया, आविष्टम्, अश्रुपूर्णाकुलेक्षणम्, विषीदन्तम्, इदम्, वाक्यम्, उवाच, मधुसूदनः ॥ १ ॥

**संजय भन्दछन् कि—**

| | | | |
|---|---|---|---|
| **तथा** | = यस प्रकार | **तम्** | = ती अर्जुन प्रति |
| **कृपया** | = करुणाले | **मधुसूदनः** | = भगवान् मधुसूदनले |
| **आविष्टम्** | = व्याप्त (र) | **इदम्** | = यो (यस्तो) |
| **अश्रुपूर्णा-कुलेक्षणम्** | = आँसुले पूर्ण तथा व्याकुल नेत्र भएका | **वाक्यम्** | = वचन |
| **विषीदन्तम्** | = शोकयुक्त | **उवाच** | = भन्नुभयो। |

**[ श्रीकृष्णद्वारा अर्जुनको मोह र कायरतायुक्त विषादको निन्दा एवं उनलाई युद्धको लागि उत्साहित गर्नु।]**

*श्रीभगवानुवाच*

**कुतस्त्वा कश्मलमिदं विषमे समुपस्थितम्।**
**अनार्यजुष्टमस्वर्ग्यमकीर्तिकरमर्जुन ॥ २ ॥**

कुतः, त्वा, कश्मलम्, इदम्, विषमे, समुपस्थितम्,
अनार्यजुष्टम्, अस्वर्ग्यम्, अकीर्तिकरम्, अर्जुन ॥ २ ॥

**श्रीभगवान् भन्नुहुन्छ—**

| | | | |
|---|---|---|---|
| **अर्जुन** | = हे अर्जुन! | **( यतः )** | = किनभने |
| **त्वा** | = तिमीलाई (यस) | **अनार्यजुष्टम्** | = न त यो श्रेष्ठ पुरुषद्वारा आचरण गरिन्छ, |
| **विषमे** | = असमयमा | **अस्वर्ग्यम्** | = न स्वर्गलाई प्रदान गर्छ र |
| **इदम्** | = यो | **अकीर्तिकरम्** | = न कीर्ति गर्नेवाला नै छ। |
| **कश्मलम्** | = मोह | | |
| **कुतः** | = के कारणले | | |
| **समुपस्थितम्** | = प्राप्त भयो ? | | |

**क्लैब्यं मा स्म गमः पार्थ नैतत्त्वय्युपपद्यते।**
**क्षुद्रं हृदयदौर्बल्यं त्यक्त्वोत्तिष्ठ परन्तप॥ ३ ॥**

क्लैब्यम्, मा, स्म, गमः, पार्थ, न, एतत्, त्वयि, उपपद्यते,
क्षुद्रम्, हृदयदौर्बल्यम्, त्यक्त्वा, उत्तिष्ठ, परन्तप ॥ ३ ॥

**तसर्थ—**

| | | | |
|---|---|---|---|
| **पार्थ** | = हे अर्जुन! | **परन्तप** | = हे परंतप! |
| **क्लैब्यम्** | = नपुंसकतालाई | | |
| **मा, स्म, गमः** | = न अँगाल, | **क्षुद्रम्, हृदयदौर्बल्यम्** | = हृदयको तुच्छ दुर्बलतालाई |
| **त्वयि** | = तिमीमा | | |
| **एतत्** | = यो | **त्यक्त्वा** | = त्यागेर |
| **न, उपपद्यते** | = उपयुक्त हुँदैन । | **उत्तिष्ठ** | = युद्धको लागि खडा होऊ(उठ)। |

[ अर्जुनले भीष्म-द्रोण आदि पूज्य गुरुजनहरूलाई मार्नुभन्दा भिक्षान्नद्वारा निर्वाह श्रेष्ठ बताउनु।]

*अर्जुन उवाच*

**कथं भीष्ममहं सङ्ख्ये द्रोणं च मधुसूदन।**
**इषुभिः प्रति योत्स्यामि पूजार्हावरिसूदन॥ ४॥**

कथम्, भीष्मम्, अहम्, सङ्ख्ये, द्रोणम्, च, मधुसूदन,
इषुभिः, प्रति, योत्स्यामि, पूजार्हौ, अरिसूदन॥ ४॥

**तब अर्जुन भन्दछन् कि—**

**मधुसूदन** = हे मधुसूदन!
**अहम्** = म
**सङ्ख्ये** = रणभूमिमा
**कथम्** = कसरी
**इषुभिः** = बाणले
**भीष्मम्** = भीष्मपितामह
**च** = र
**द्रोणम्** = द्रोणाचार्यका
**प्रति योत्स्यामि** = विरुद्ध लड़ूँला?
**( यतः )** = किनभने
**अरिसूदन** = हे अरिसूदन!
**( तौ )** = उहाँहरू दुवै
**पूजार्हौ** = पूजनीय छन्।

**गुरूनहत्वा हि महानुभावान्**
**श्रेयो भोक्तुं भैक्ष्यमपीह लोके।**
**हत्वार्थकामांस्तु गुरूनिहैव**
**भुञ्जीय भोगान्रुधिरप्रदिग्धान्॥ ५॥**

गुरून्, अहत्वा, हि, महानुभावान्, श्रेयः, भोक्तुम्,
भैक्ष्यम्, अपि, इह, लोके, हत्वा, अर्थकामान्, तु,
गुरून्, इह, एव, भुञ्जीय, भोगान्, रुधिरप्रदिग्धान्॥ ५॥

**यसैले यी—**

**महानुभावान्** = महानुभाव
**गुरून्** = गुरुजनहरूलाई
**अहत्वा** = नमारेर (म)
**इह** = यस
**लोके** = लोकमा
**भैक्ष्यम्** = भिक्षाको अन्न

| | | | |
|---|---|---|---|
| अपि | = नै | ( अपि ) | = पनि |
| भोक्तुम् | = खानु | इह | = यस लोकमा |
| श्रेयः | = कल्याणकारक (सम्झन्छु)। | रुधिरप्रदिग्धान् | = रगतले मुछिएको |
| | | अर्थकामान् | = अर्थ र कामरूप |
| हि | = किनकि | भोगान्, एव | = भोगहरूलाई नै |
| गुरून् | = गुरुजनहरूलाई | तु | = त |
| हत्वा | = मारेर | भुञ्जीय | = भोग्ने छु। |

**[ युद्ध गर्ने वा नगर्ने विषयमा अर्जुनको संशय।]**

**न चैतद्विद्मः कतरन्नो गरीयो-**
**यद्वा जयेम यदि वा नो जयेयुः।**
**यानेव हत्वा न जिजीविषाम-**
**स्तेऽवस्थिताः प्रमुखे धार्तराष्ट्राः ॥ ६ ॥**

न, च, एतत्, विद्मः, कतरत्, नः, गरीयः, यत्, वा, जयेम, यदि, वा, नः, जयेयुः, यान्, एव, हत्वा, न, जिजीविषामः, ते, अवस्थिताः, प्रमुखे, धार्तराष्ट्राः ॥ ६ ॥

**र हामी—**

| | | | |
|---|---|---|---|
| एतत् | = यो | जयेम | = तिनलाई हामीले जित्छौं |
| च | = पनि | | |
| न विद्मः | = जान्दैनौं (कि) | यदि, वा | = या |
| नः | = हाम्रो लागि (युद्ध गर्नु र नगर्नु —यी दुबैमा) | नः | = हामीलाई (तिनले) |
| | | जयेयुः | = जित्लान्। (र) |
| | | यान् | = जसलाई |
| कतरत् | = कुन कुरा | हत्वा | = मारेर (हामी) |
| गरीयः | = श्रेष्ठ छ | न, जिजीविषामः | = बाँच्नै चाहँदैनौं, |
| यत्, वा | = अथवा (यो पनि थाहा छैन कि) | ते | = ती |

| | | | |
|---|---|---|---|
| एव | = नै (हाम्रा आत्मीय) | प्रमुखे | = हाम्रो सामन्ने लड्नमा |
| धार्तराष्ट्राः | = धृतराष्ट्रका पुत्र | अवस्थिताः | = खडा छन्। |

[मोह र कायरतारूप दोषहरूको वर्णन गर्दै भगवान्‌को शरण भई उनीसित कल्याणप्रद उपदेशका लागि अर्जुनद्वारा प्रार्थना।]

**कार्पण्यदोषोपहतस्वभावः**
**पृच्छामि त्वां धर्मसम्मूढचेताः।**
**यच्छ्रेयः स्यान्निश्चितं ब्रूहि तन्मे**
**शिष्यस्तेऽहं शाधि मां त्वां प्रपन्नम्॥ ७॥**

कार्पण्यदोषोपहतस्वभावः, पृच्छामि, त्वाम्, धर्मसम्मूढचेताः, यत्, श्रेयः, स्यात्, निश्चितम्, ब्रूहि, तत्, मे, शिष्यः, ते, अहम्, शाधि, माम्, त्वाम्, प्रपन्नम्॥ ७॥

तसर्थ—

| | | | |
|---|---|---|---|
| कार्पण्य-दोषोपहत-स्वभावः | = कायरतारूप दोषले युक्त स्वभाव भएको (र) | स्यात् | = छ, |
| | | तत् | = त्यही |
| | | मे | = मेरो लागि |
| | | ब्रूहि | = आज्ञा होस्; (किनकि) |
| धर्मसम्मूढचेताः | = धर्मको विषयमा मोहितचित्त भएको (म) | अहम् | = म |
| | | ते | = हजुरको |
| त्वाम् | = हजुरसँग | शिष्यः | = शिष्य हूँ (त्यसैले) |
| पृच्छामि | = सोद्धछु (कि) | त्वाम् | = हजुरको |
| यत् | = जो (साधन) | प्रपन्नम् | = शरणागत |
| निश्चितम् | = निश्चित | माम् | = मलाई |
| श्रेयः | = कल्याणकारक | शाधि | = शिक्षा दिनुहोस्। |

[ अर्जुनले त्रिलोकको निष्कण्टक राज्यलाई पनि शोकनिवृत्तिमा कारण नमानी वैराग्यको भाव प्रदर्शित गर्नु।]

**न हि प्रपश्यामि ममापनुद्याद्**
**यच्छोकमुच्छोषणमिन्द्रियाणाम् ।**
**अवाप्य भूमावसपत्नमृद्धं-**
**राज्यं सुराणामपि चाधिपत्यम् ॥ ८ ॥**

न, हि, प्रपश्यामि, मम, अपनुद्यात्, यत्, शोकम्, उच्छोषणम्, इन्द्रियाणाम्, अवाप्य, भूमौ, असपत्नम्, ऋद्धम्, राज्यम्, सुराणाम्, अपि, च, आधिपत्यम् ॥ ८ ॥

| | | | |
|---|---|---|---|
| **हि** | = किनकि | **( तत् )** | = त्यो(उपाय)-लाई |
| **भूमौ** | = भूमिमा | | |
| **असपत्नम्** | = अकण्टक, | **न प्रपश्यामि** | = देख्दिन, |
| **ऋद्धम्** | = धनधान्य-सम्पन्न | **यत्** | = जो |
| **राज्यम्** | = राज्यलाई | **मम** | = मेरो |
| **च** | = र | | |
| **सुराणाम्** | = देवताहरूको | **इन्द्रियाणाम्** | = इन्द्रियहरूलाई |
| **आधिपत्यम्** | = स्वामित्व | **उच्छोषणम्** | = सुकाउने |
| **अवाप्य** | = पाएर | **शोकम्** | = शोकलाई |
| **अपि** | = पनि ( म ) | **अपनुद्यात्** | = हटाउन सकोस्। |

[ ( संजयद्वारा वर्णित ) अर्जुन युद्ध नगर्नको लागि भन्दै चुप हुनु र भगवान् मुस्कुराउदै बोल्नु।]

*सञ्जय उवाच*

**एवमुक्त्वा हृषीकेशं गुडाकेशः परन्तप।**
**न योत्स्य इति गोविन्दमुक्त्वा तूष्णीं बभूव ह ॥ ९ ॥**

एवम्, उक्त्वा, हृषीकेशम्, गुडाकेशः, परन्तप, न, योत्स्ये, इति, गोविन्दम्, उक्त्वा, तूष्णीम्, बभूव, ह ॥ ९ ॥

संजय भन्दछन्—

| | | | |
|---|---|---|---|
| **परन्तप** | = हे राजन्! | **गोविन्दम्** | = श्रीगोविन्द, भगवान्सँग |
| **गुडाकेशः** | = निद्रालाई जितेका अर्जुन | **न, योत्स्ये** | = 'युद्ध गर्दिन' |
| **हृषीकेशम्** | = अन्तर्यामी श्रीकृष्ण महाराजसमक्ष | **इति** | = यस्तो |
| | | **ह** | = स्पष्ट |
| | | **उक्त्वा** | = भन्दै |
| **एवम्** | = यस प्रकार | **तूष्णीम्** | = चुप |
| **उक्त्वा** | = भन्दै (अनि) | **बभूव** | = लागे। |

**तमुवाच हृषीकेशः प्रहसन्निव भारत।**
**सेनयोरुभयोर्मध्ये विषीदन्तमिदं वचः ॥ १० ॥**

तम्, उवाच, हृषीकेशः, प्रहसन्, इव, भारत,
सेनयोः, उभयोः, मध्ये, विषीदन्तम्, इदम्, वचः ॥ १० ॥

तत्पश्चात्—

| | | | |
|---|---|---|---|
| **भारत** | = हे भरतवंशी धृतराष्ट्र! | **मध्ये** | = बीचमा |
| | | **विषीदन्तम्** | = शोकमग्न भएका |
| **हृषीकेशः** | = अन्तर्यामी श्रीकृष्ण महाराज | **तम्** | = ती अर्जुनलाई |
| | | **प्रहसन्, इव** | = मुस्कुराएझैं गरी |
| | | **इदम्** | = यो |
| **उभयोः** | = दुबै | **वचः** | = वचन |
| **सेनयोः** | = सेनाहरूको | **उवाच** | = भन्नुभयो। |

[ अर्जुनप्रति भगवान्को उपदेश प्रारम्भ। ]

*श्रीभगवानुवाच*

**अशोच्यानन्वशोचस्त्वं प्रज्ञावादांश्च भाषसे।**
**गतासूनगतासूंश्च नानुशोचन्ति पण्डिताः ॥ ११ ॥**

अशोच्यान्, अन्वशोचः, त्वम्, प्रज्ञावादान्, च भाषसे,
गतासून्, अगतासून्, च, न, अनुशोचन्ति, पण्डिताः ॥ ११ ॥

श्रीभगवान् भन्नुहुन्छ—हे अर्जुन!—

| | | | |
|---|---|---|---|
| **त्वम्** | = तिमी | **गतासून्** | = जसको प्राण गइसकेको छ, तिनका लागि |
| **अशोच्यान्** | = शोक गर्न योग्य नभएका मनुष्यको लागि | **च** | = र |
| **अन्वशोचः** | = शोक गर्दै छौ | **अगतासून्** | = जसको प्राण गएको छैन, तिनका लागि (पनि) |
| **च** | = र | **पण्डिताः** | = पण्डितजन |
| **प्रज्ञावादान्** | = पण्डित झैँ गरी वचनहरूलाई | **न, अनुशोचन्ति** | = शोक गर्दैनन्। |
| **भाषसे** | = भन्दै छौ; (तर) | | |

[ आत्माको नित्यता र निर्विकारताको निरूपण।]

**न त्वेवाहं जातु नासं न त्वं नेमे जनाधिपाः।**
**न चैव न भविष्यामः सर्वे वयमतः परम्॥ १२॥**

न, तु, एव, अहम्, जातु, न, आसम्, न, त्वम्, न, इमे, जनाधिपाः,
न, च, एव, न, भविष्यामः, सर्वे, वयम्, अतः, परम्॥ १२॥

| | | | |
|---|---|---|---|
| **न** | = न | **न ( आसीः )** | = थिएनौ (अथवा) |
| **तु** | = त | **इमे** | = यी |
| **( एवम् )** | = यस्तो | **जनाधिपाः** | = राजाहरू |
| **एव** | = नै (हो कि) | **न ( आसन् )** | = थिएनन् |
| **अहम्** | = म | **च** | = र |
| **जातु** | = कुनै समयमा | **न** | = न |
| **न आसम्** | = थिइन (अथवा) | **( एवम् )** | = यस्तो |
| **त्वम्** | = तिमी | **एव** | नै (हो कि) |
| | | **अतः** | = यसभन्दा |
| | | **परम्** | = अगाडि |

| | | | |
|---|---|---|---|
| **वयम्** | = हामी | **न भविष्यामः** | = रहँदैनौँ। |
| **सर्वे** | = सबै | | |

**देहिनोऽस्मिन्यथा देहे कौमारं यौवनं जरा।**
**तथा देहान्तरप्राप्तिर्धीरस्तत्र न मुह्यति॥ १३॥**

देहिनः, अस्मिन्, यथा, देहे, कौमारम्, यौवनम्, जरा,
तथा, देहान्तरप्राप्तिः, धीरः, तत्र, न, मुह्यति॥ १३॥

तर—

| | | | |
|---|---|---|---|
| **यथा** | = जसरी | **तथा** | = त्यसरी नै |
| **देहिनः** | = जीवात्माको | **देहान्तरप्राप्तिः** | = अन्य शरीरको प्राप्ति हुन्छ; |
| **अस्मिन्** | = यो | **तत्र** | = त्यस विषयमा |
| **देहे** | = शरीरमा | **धीरः** | = धीर पुरुष |
| **कौमारम्** | = बालकपन, | | |
| **यौवनम्** | = जवानी (र) | | |
| **जरा** | = वृद्धावस्था (हुन्छ) | **न, मुह्यति** | = मोहित हुँदैनन्। |

[ समस्त भोगलाई अनित्य बताउँदै सुख-दुःखादि द्वन्द्वलाई सहन गर्नको लागि आज्ञा।]

**मात्रास्पर्शास्तु कौन्तेय शीतोष्णसुखदुःखदाः।**
**आगमापायिनोऽनित्यास्तांस्तितिक्षस्व भारत॥ १४॥**

मात्रास्पर्शाः, तु, कौन्तेय, शीतोष्णसुखदुःखदाः,
आगमापायिनः, अनित्याः, तान्, तितिक्षस्व, भारत॥ १४॥

| | | | |
|---|---|---|---|
| **कौन्तेय** | = हे कुन्तीपुत्र! | **तु** | = त |
| **शीतोष्ण-सुखदुःखदाः** | = चिसो-तातो र सुख-दुःखलाई प्रदान गर्ने | **आगमापायिनः** | = उत्पत्ति-विनाशशील (र) |
| **मात्रास्पर्शाः** | = इन्द्रिय र विषयहरूको संयोग | **अनित्याः** | = अनित्य छ, (तसर्थ) |

| | | | |
|---|---|---|---|
| **भारत** | = हे भरतवंशी ! | **तितिक्षस्व** | = सहन गर। |
| **तान्** | = यिनलाई (तिमी) | | |

[ उक्त सहनशीलतालाई मोक्षप्राप्तिमा हेतु बताउनु। ]

**यं हि न व्यथयन्त्येते पुरुषं पुरुषर्षभ।**
**समदुःखसुखं धीरं सोऽमृतत्वाय कल्पते॥ १५॥**

यम्, हि, न, व्यथयन्ति, एते, पुरुषम्, पुरुषर्षभ,
समदुःखसुखम्, धीरम्, सः, अमृतत्वाय, कल्पते॥ १५॥

| | | | |
|---|---|---|---|
| **हि** | = किनकि | **एते** | = यी (इन्द्रिय र विषयहरूको संयोगले) |
| **पुरुषर्षभ** | = हे पुरुषश्रेष्ठ ! | **न व्यथयन्ति** | = व्याकुल पार्न सक्तैनन्, |
| **समदुःखसुखम्** | = दुःख-सुखलाई समान ठान्ने | | |
| **यम्** | = जुन | **सः** | = त्यो |
| **धीरम्** | = धीर | **अमृतत्वाय** | = मोक्षको |
| **पुरुषम्** | = पुरुषलाई | **कल्पते** | = योग्य हुन्छ। |

[ सत् र असत्‌को लक्षण। ]

**नासतो विद्यते भावो नाभावो विद्यते सतः।**
**उभयोरपि दृष्टोऽन्तस्त्वनयोस्तत्त्वदर्शिभिः॥ १६॥**

न, असतः, विद्यते, भावः, न, अभावः, विद्यते, सतः,
उभयोः, अपि, दृष्टः, अन्तः, तु, अनयोः, तत्त्वदर्शिभिः॥ १६॥

र हे अर्जुन!—

| | | | |
|---|---|---|---|
| **असतः** | = असत् (वस्तु) को (त) | **न विद्यते** | = छैन |
| | | **तु** | = र |
| **भावः** | = सत्ता (अस्तित्व) | **सतः** | = सत्‌को |
| | | **अभावः** | = अभाव |

